## लेखकका अरु पुस्तिकाहरूः—

१) ह्मपूजाको पद्धति
२) लक्ष्मीपूजाको पद्धति



मुद्रकः– मञ्जुश्री प्रेस ललितपुर फोन नं २१५०८

रवि शाक्य
इखाछैं, यल

# आत्मपूजा
## (ह्मपूजा)
### एक शास्त्रीय अध्ययन

लेखकः—
प्रि. मङ्गलराज जोशी एम.ए.
ज्यौतिषाचार्य, गणित शास्त्री
ज्योति–निवास
ललितपुर।

मितिः– वि.सं.२०२७ ने. सं. १०९१
कार्तिकशुक्ल प्रतिपदा

Rs 0-50

# विषय-सूची



# आत्मपूजा ( ह्मपूजा )

*विषयमा*

## एक शास्त्रीय अध्ययन

आत्मपूजा ( ह्मपूजा ) नेपालमा बर्तमानयुगमा कुनै एकसमाजमा मात्र प्रचलित भएर रहेता पनि यसको प्रचार पहिले पहिले बिस्तृत थियो भन्नेछ, किनकि "अहं पूजा" ह्मपूजाको रुपान्तर हो भन्दछ। उक्त 'अहं पूजा' अर्को कुनै समाजमा प्रचलित थियो र पछि लोप भएर गयो भन्ने बिषय अवगत हुनआएको छ।

### ह्मपूजाको नामान्तर

'ह्म' शब्दले शरीर भन्ने शाब्दिकअर्थबाट बुझाएता पनि, प्रसङ्गतः बर्तमानबिषयमा आत्मा अथवा आफू भन्ने बुझाउँछ। अतः ह्मपूजालाई आत्मपूजा र स्वपूजा पनि भनेर पुराण र तन्त्रहरुमा उल्लेख छ। कहीं यसलाई स्वदेहपूजा पनि भनेको छ।

**भविष्यपुराणमा–**

"गन्धैः पुष्पै र्नवै र्वस्त्रै रात्मानं पूजयेत् च यः

**नेपालवर्ष क्रियामा–**

स्वपूजां कारयेत् ततः ।

ज्यौतिषतन्त्रमा

आत्मपूजां द्वितीयायां स्वपूजान्त समाचरेत ॥

नेपालवर्षक्रियामा-

पूजयेत् विधिवत्तत्र लक्ष्मीं च स्वस्वदेहकम.

## ह्मपूजाको इतिहास

ह्मपूजा कसले चलायो र कुन समय देखि चल्यो भन्ने बिषयमा अझ अन्वेषण गर्नु पर्नेछ ।

(क) नेपालसंबतको प्रारम्भकालदेखि उक्त संबतको आरम्भदिन शुभदिन मानेर वत्सरारंभको शुभउपलक्षमा यो पूजा चलाई आएको भन्ने पनि कोही कोही छन् । यो भनाई तथ्यहीन छ युक्ति संगत छैन र बिबादास्पद छ तर ह्मपूजाको दिनको उपलक्षमा उक्त संबत चलाइएको थियो भन्ने विषयमा धेरै बिद्वानहरुको मत ऐक्य छ ।

(ख) 'ह्मपूजा' पुराणमा उल्लेख भएको हुंदा उक्त संबत् चल्नु अगावै यो पूजा चलेको थियो भन्ने बिषय स्वतःसिद्ध छ ।

(ग) हेमाद्रि- ब्रम्हपुराणमा-

बीरप्रतिपदं प्राप्य तत्रभावी महोत्सव ॥

तत्रत्वां नृपशार्दूल ··· ··· ···· ··· ·· ··· ··

··· ··· ··· अर्चयिष्यन्ति मानवाः ॥ ॥



उक्त प्रमाण अनुसार कार्तिक शुक्ल प्रतिपदालाई बीर प्रतिपदा भन्दछन् । वामनअवतार लिनु भएका बिष्णु भगवान्ले यसप्रतिपदालाई बीर प्रतिपदा भन्नु भएकोबाट स्पष्ट हुन्छ कि वामन अवतारको समयभन्दा अघिनै यस प्रतिपदाको नाम बीरप्रतिपद् रहेको थियो। आत्मपूजा बीर प्रतिपद्को एककृत्य भएकोले बलिपूजाको सर्जना हुनु भन्दा अघिनै "ह्मपूजा"को प्रारम्भ भएको भन्ने सिद्ध हुन्छ ।

## धार्मिक र सामाजिकमहत्वः—

ह्मपूजाको धार्मिक तथा सामाजिक महत्त्व तान्त्रिक तथा पौराणिक आधारमा रहेकोछ ।

(क ह्मपूजाको धार्मिकमहत्त्वविषयमा भबिष्यपुराणमा र कालविवेकमा स्पष्टरूपमा प्रमाणहरुको उल्लेख भएकोछ

भविष्यपुराणमा –

"गन्धैः पुष्पै नवै वस्त्रै रात्मानं पूजयच्च यः ॥

तस्यां प्रतिपदायां तु स गच्छेत् ब्रह्मणः पदम् ॥

कार्तिकशुक्लको प्रतिपदामा ह्मपूजा गरेमा ब्रह्मलोक प्राप्त हुन्छ । कुनैमा "ब्राह्मणःपदम्"को अर्थ गर्दाआत्मपूजा गर्यो भने ब्राह्मणको स्थान प्राप्त हुने छ भनेको छ । यसपूजा प्रतिबर्ष गरी आएको हुंदा यसपूजालाई आब्दिकद्विज संस्कार भन्न सकिन्छ अथवा आत्मा-शुद्धीकरण-संवन्धी संस्कार भन्न सकिन्छ ।

## महामन्थानभैरव-तन्त्रमा

"तैलस्य मण्डलं यावत् तावज्जीवति मानवः ॥
तस्मा-त्तैलेन तत्रैव मण्डलं क्रियते नरैः ॥

पाँच मण्डलहरू तेलले बनाउँदछन्। जबसम्म ती तेलका मण्डलहरु रहन्छन्, तब सम्म त्यो मानिस बाँच्दछ।

अतः यसपूजाको धार्मिकमहत्व विशेषतः महान् छ।

## सामाजिक महत्व

कार्तिक शुक्ल प्रतिपदामा

१) सबै परिवार संमिलित भई मनोरञ्जन गर्ने दिन.
२) शुभचिन्तन गर्ने दिन
३) प्रफुल्लित भई रहने दिन
४) बर्षभरको लख हेर्ने दिन

## नेपालवज्रक्रियामा

"श्रोतव्यं गीतवाद्यादि गन्धादि सगुणं तथा ॥
पूजयेत् यमभगिनीं यमं च चित्रगुप्तकम् ॥ ॥
मण्डलं क्रियते तत्र स्वपूजां महतीं चरेत् ॥
जल कुंभं प्रदीपंच मार्जनींच प्रपूजयेत् ॥ ॥

उक्त प्रतिपदामा सबै परिवार मिली गान बजान गरी मनोरञ्जन गर्ने र गन्धादि सुगन्ध बस्तु र सगुणको पूजा गरी बीरप्रतिपदको कृत्य अनुसार ती सगुण आदिको उपभोग गर्ने दिन पनि यही हो।

(२) उक्त प्रतिपदाको दिन आफ्नो परिवारका सबै एकै



पंक्तिमा रही अष्टदलकमल अथवा अष्टमण्डल आसन हुने गरी पञ्चतत्वलाई प्रतिनिधित्व गर्ने मण्डल प्रत्येक व्यक्तिको निम्ति बनाई त्रिमूर्ति (तीन देवता ब्रह्मा, विष्णु, महेश्वर, अथवा बुद्ध, धर्म, संघ) को निम्ति सबभन्दा माथि तीन मण्डल बनाई जलकुम्भ, दीप, कुचो राखी पूजा गर्दछन्। (क) उक्त प्रतिपदाको दिन यमपञ्चकको अन्तर्गत भएको (ख) तन्त्रमा स्वपूजावत् भ्रातृ पूजा गर्ने भन्ने भएको र (ग) बलिपूजाको सृजना हुनु भन्दा अगावै आत्मपूजाको प्रथा चलि सकेको भन्ने प्रमाणित भएको यी तीनकारणले गर्दा र त्यस्तै बलिपूजा पछि अरू पूजा नगर्नु

कृत्वेत्तसर्व मेवेह रात्रौ दैत्यपते र्बलेः ॥
पूजां कुर्यात्ततः साक्षात् भूमौ मण्डलके शुभे ॥ ॥

## भविष्यपुराणमा

भन्ने प्रमाण अनुसार पनि बलिपूजा गरे पछि अरू पूजा गर्नु नहुने र स्वपूजासंग यम र चित्रगुप्तलाई साक्षीरूपमा पूजा गर्ने भन्ने प्रमाण प्राप्तछ। र यम परिवार अर्थात् यम,चित्रगुप्त र यम दूतहरूको निम्ति मण्डल पंक्तिको पुछारमा एक वा दुइ जल मण्डल बनाईपूजा गर्ने चलन अझसम्म पनि प्रचलनमा रहेकोछ।

(२) पूर्व उक्त अनुसार मण्डल बनाई पूजागरी एकै समयमा सबैले बीर प्रतिपद्को तन्त्रोक्त कृत्यअनुसार सगुण-लिई आ आफ्ना शुभ कल्याण चिताउने र शुभ कामना गर्ने र शुभ आशीर्वाद दिने समय पनि यही हो।

(३) कार्तिकशुक्ल प्रतिपदाको दिनमा जुन मानिस जस्तो किसिमले रहन्छ, बर्षभर त्यस व्यक्ति त्यही रूपले सुख वा

दुःखमा दिन बिताउनु पर्ने हुन्छ ।

"यो यादृशेन भावेन तिष्ठत्यस्याँ युधिष्ठिर ॥
हर्षदैन्यादि रूपेण तस्यवर्षं प्रयाति हि
रूदिते रोदिति वर्षं हृष्टो वर्ष ग्रहृष्यति
भुक्ता भाल्कि भवेत् वर्षं स्वस्थःस्वस्थो भविष्यति
तस्मात् प्टै प्रैस्तैप्र स्तु कर्तव्या कौमुदी नरैः
बैष्णवी दानवी चेय तिथिः पैत्री युधिष्ठिर

(IV) उक्त प्रतिपद को दिन प्रभात समयमा द्यूत क्रीडा गरी वर्षभरको आफ्नो लख हेर्ने दिन पनि यही हो ।

शिव र पार्वती दुवै वसी उक्तदिनमा प्रभातसमयमा द्यूत क्रीडा गरेका थिए र त्यस द्यूतक्रीडामा शङ्कर हानु भयो र पार्बतीले जित्नु भयो अतः महादेव सँधै दुःखी भए र पार्बती सुखी वनीन् ।

हेमाद्रि आदित्यपुराणमा—

शङ्कर स्तु पुरा द्यूतं ससर्ज सुमनोहरम् ॥
कार्तिकशुक्लपक्षेतु प्रथमेऽहनि सत्यवान् ॥ ॥
जितश्च शङ्कर स्तत्र जयं लेभे च पार्बती ॥
अतोर्थ शंकरो दुःखी उमानित्यं सुखोचिता ॥ ॥
तस्मात् द्यूतं प्रकर्तव्यं प्रभाते तत्र मानवः ॥
तस्मिन् द्यूते जयो यस्य तस्य सबत्सरो जयः ॥
पराजयो बिरुद्धश्च लब्धनाशकरो भवेत् ॥ ॥



उक्त दिन द्यूतक्रीडा गर्दा जितेमा वर्षभर नै कार्यादिमा बिजयलाभ हुने हुन्छ र पराजय भएमा बर्षभर हानि नोक-सानी पर्ने हुन्छ ।

## तिहार, बिभिन्नपर्व

बैष्णवी दानवी चेय तिथिः पैत्री युधिष्ठिर ॥

तिहारको दिनहरुलाई दानवी, बैष्णवी (दैबिक) र पैत्री-पर्व पनि भन्छन्, किनकि उक्त दिनहरूमा ती तीन प्रकारका कर्मः— पैत्री, दैबिक र दानवी वर्गहरू गर्दछन् ।

क) दैबिकः—

१) नारीनिराजनम्
२) बिष्णु मूर्ति सहित गोवर्द्धनपूजा
३) मार्गपालीबन्धनम्
४) यष्टिकाकर्षणम्
५) द्यपूजा ( आत्मपूजा )
६) लक्ष्मीपूजा
७) भ्रातृपूजा, यमपूजा, चित्रगुप्तपूजा ।

ख) दानबी—

१) बलिपूजा
२) अलक्ष्मी निष्कासनम

ग) पैत्री—

१) पार्बणश्राद्धम्
२) पितृमार्गप्रदर्शनम्

यसरी सबै प्रकारको कर्म हुने पर्व हुनाले यसलाई दैबिक, दानवी र पैत्री पर्व भन्दछन् ।

यी पर्वहरूका समयावधिलाई यमपञ्चक वालेयत्रय, र त्यन्तै भन्दछन र नेपालमा "तिहार" र "स्वन्ति" भन्ने चलन छ ।

## यमपञ्चक र तदन्तर्गत पर्व

यमपञ्चकः- कार्तिककृष्ण त्रयोदशी देखि कार्तिकशुक्ल द्वितीया संमको समयावधिलाई यम पञ्चक भन्दछन । सामान्यतः यमपञ्चक पाँच दिनको नै हुन्छ । तिथिको ह्रास अथवा बृद्धि भएमा ४ दिन अथवा ६ दिनको पनि हुन सक्छ । यो समय यम र यमकिङ्करको पूजा हुने पाँचदिनको पर्व हुनाले यससमयावधिलाई यमपञ्चक भन्दछन् ।

## नेपालवर्षक्रियामा

द्वादश्यां च त्रयोदश्यां चतुर्दश्यां तथैवच ॥
अमावास्यां प्रतिपदि द्वितीयायां क्रमाद् बुधैः
गजं काकं तथा स्वांन गां लक्ष्मीं स्वस्वदेहकम्
पूजयेत् भ्रातरं तत्र बिधिवत् सर्बमानवैः ॥

द्वादशीमा हात्तीको पूजा, त्रयोदशीमा काग, चतुर्दशीमा कुकुर पूजा, औंसीमा गाई लक्ष्मी पूजा प्रतिपदामा म्हपूजा, द्वितीयामा भाइ पूजा यी पूजाहरू क्रमशः गर्नु पर्ने भन्ने विषय उक्त प्रमाणबाट स्पष्टछ ।

नेपालमा हात्ती पूजा बाहेक अरु पूजा उक्तवत् प्रचलित छन् । यमराजका दूतका प्रतिनिधि मानिएका कागलाई बलि दिने र कुकुर पूजा चतुर्दशीमा गर्ने चलन देशव्यापी छ ।



## यमदीपदान

हेमाद्रि स्कन्दपुराण स्मृतिकौस्तुभमा—
(क) कार्तिकस्य सितेपक्षे त्रयोदश्यां निशामुखे ॥
यमदीप बहिर्दध्यात् अपमृत्यु विनश्यति ॥ ॥

कार्तिककृष्ण त्रयोदशी साँझमा यमराजलाई दीपदान गर्नाले अकालमृत्यु निबारण हुन्छ ।

## ख) दिवोदासीये ब्राम्हे

अमाबास्यां चतुर्दश्यां प्रदोषे दीपदानतः ।
यममार्गान्धकारेभ्यो मुच्यते कार्तिके नरः ॥

चतुर्दशी र औंसीमा प्रदोष ( साँझ ) मा दीपदान गर्नाले यमराज कहाँ जाने बाटोमा रहेका अन्धकारबाट मुक्ति पाउँदछ ।

कार्तिककृष्ण चतुर्दशीको कृत्यः—

१) बिहान सबेरै अभ्यङ्ग स्नान
२) यमराजलाई तर्पण दिने
३) तपस्वीलाई भोजन
४) प्रदोषमा दीपदान

## १) प्रत्यूषे अभ्यंगस्नान

हेमाद्रि भविष्यपुराणमा

कार्तिके कृष्णपक्षे तु चतुर्दश्या विनोदये ॥
अवश्यमेव कर्तव्यं स्नानं नरकभीरुभिः ॥

इनः– चन्द्रः अत्र
कार्तिककृष्ण चतुर्दशी प्रभात चन्द्रोदयसमयमा नरकबाट हुने भय देखि मुक्तिपाउनअभ्यङ्ग स्नान गर्नुपर्दछ ।

## २) यमतर्पण

कृत्यतत्वार्णवमा

यां काञ्चित् सरितं प्राप्य कृष्णपक्षे चतुर्दशी ॥
यमुनायां विशेषेण नियत स्तर्पयेद् यमम् ॥ ॥
इदश्च तर्पणं जीवत् पितृकेणापि कारयेत्
जीवत् पितापि कुर्वीत तर्पणं यमभीष्मयोः ॥

कार्तिककृष्ण चतुर्दशी कुनै न कुनै नदीमा गई यमराजलाई तर्पणदिनु पर्दछ र पाएसम्म यमुनामा पुगी तर्पण गर्नु उत्तम छ । यमराज र भीष्म पितामहलाई तर्पण बाबुजीवित भएका व्यक्तिहरूले पनि गरे हुन्छ ।

## ३) तपस्वी भोजन

लिङ्गपुराणमा

"ततः प्रेतचतुर्दश्यां भोजयित्वा तपोधनान् ।
दानं दत्वातु तेभ्योऽतु यमलोकं न पश्यति ॥

प्रेतचतुर्दशीमा तपस्वीहरूलाई भोजन गराई दानदिनाले यमलोक जान नपर्ने हुन्छ ।

**दीपदानः**–चतुर्दशीमा दीपदान गर्ने विषय पहिलेनै



उल्लेख भइसकेको छ ।

## यमराजपूजाः-

म्हपूजा र भाइपूजाको साथै यम यम, भगिनी र चित्रगुप्त लाई पूजा गर्नु भन्ने छ ।

नेपालवर्षक्रियामा

पूजयत् यमभगिनीं यमं च चित्रगुप्तकम ॥
मण्डलं क्रियते तत्र स्वपूजां महतीं चरेत् ॥ ॥
ज्योतिषतन्त्रमा—
भ्रातृपूजां द्वितीयायां स्वपूजावत् समाचरेत् ॥
गौडग्रन्थेः—
यमंच चित्रगुप्तच यमदूतां श्च पूजयेत् ॥
अर्ध्यंचात्र प्रदातव्यो यमाय सहजद्वयैः" ॥
भ्रातृद्वितीया कृतदेवपूजां गृहाण चार्घ्यं भगवन्न नमोस्तुते

ब्रम्हपुराणमा

बीरप्रतिपदं प्राप्य तवभावी महोत्सवः ।
तत्र त्वां नृपशार्दूल अर्चयिष्यन्ति मानवाः ॥

म्हपूजा बीरप्रतिपदाको कृत्य भएकोले बलिपूजा भन्दा अगाडि म्हपूजाको सृजना भएको सिद्धछ र नेपाल वर्ष क्रिया र ज्योतिषतन्त्रको प्रमाण अनुसार म्हपूजाको साथै यम, र चित्रगुप्तहरूलाई पूजा गर्नु पर्नेछ ।

अधिकांशतः प्रचलनमा पनि म्हपूजाको समयमा वैयक्तिक मण्डलहरूकोमनि सबैले दुइटा पानीको मण्डल बनाई यम परिवार र यमदूतसमेत पूजागर्छ र त्यसमा चढाएको फलफूल आदि खानु हुँदैन, अन्यत्र बाहिर दिन लाउँछन् या बाहिर राख्छन । ह्मपूजाको सरह नै भ्रातपूजा गर्न भन्ने ज्यौतिषतन्त्रमा लेखिएकोले यम, यमभगिनी, चित्रगुप्त, यमदूतको पजा ह्मपूजामा जस्तै भ्रातपूजामा गर्दछ ।

## वालेयत्रयः-

कार्तिकको चतुर्दशी, अमावास्या र प्रतिपदा तीन दिनको पर्वलाई वालेयत्रय भन्दछन । दैत्यराज बलिराजाको नाममा ती तीनदिनको नाम "वालेय," भनिरहयो । यो नाम किन कसरी रह्यो भन्ने प्रश्न उठ्दछ ।

वामनअवतार लिनु भएका विष्णु भगवानले वलिराजाबाट मर्त्यमण्डल आकाश र पाताल तीनैलोक अकस्मात् भयावहरूपमा भयानक विस्तृत गरेका आफ्ना चरणहरूले व्याप्तगरे । तीन पाइला भूमिमागेकोमा एक पाइलाले पृथ्वी, दोश्रो पाइलाले आकाश आक्रान्त (व्याप्त) गरिसके पछि तेश्रो पाइलो कहाँ राखौं भनी वामन विष्णु भगवानले भन्दा मेरो शिरमा राख भने र तेस्रो पाइलो बलिको शिरमा राखदा बलिराजा पाताल संम पुग्यो र उनी पातालमा विष्णु भगवान्लाई आफ्नो नजिकको द्वारमा द्वारपालरूपमा रहने वर मागी वही रहनु पर्ने गरे भन्ने पनि छ ।

यसरी बलिराजाबाट भगवान् वामनले पृथ्वी, आकाश



पाताल तीनलोक प्राप्त गरे पछि, के वरदान माग्छौ माग भनी बलिराजालाई भन्दा बलिराजा दैत्यको राजा भएकोले वहाँले आत्मगर्वको साथ वामनलाई भन्नु भयो:—

"आत्मार्थं किं याचनीयं सर्वं दत्तं मया तव ॥<br>
लोकार्थं याचयिष्यामि शक्तश्चेद देहि तच्च मे ॥ ॥<br>
मयाऽद्य ते धरा दत्ता वामने छद्मरूपिणे ॥<br>
त्रिभिः पदै स्त्रिदिवसैः साचाऽक्रान्ता यतस्त्वया<br>
तस्मात् भूमितले राज्य मस्तु घस्त त्रयं हरे ॥

चतुर्दशी त्रये राज्यं बले रस्त्विति याचयेत्<br>
यद्राज्ये यं दीपदानं भुवि कुर्वन्ति मानवाः<br>
तेषां गृहे तव स्त्रीय सदातिष्ठतु सुस्थिरा

मैले सबै पृथ्वी आकाश (सबै सर्वस्व) तिमीलाई दानदिएँ, अब मेरो निम्ति तिमीसंग के मागौं? जनताको निम्ति लोकको निम्ति तिमीसंग माग्दछु, तिमीले दिन सक्छौ भने देऊ ।

छल गर्ने वामन बाउन्ने रूपलिएका तिमीलाई मैले सारा पृथ्वी दानदिइ सकें । तिमीले पनि तीन पाइलाले तीन दिनमा पृथ्वीलाई प्राप्त गर्‍यौ । अतएव कार्तिक कृष्ण चतुर्दशी देखि कार्तिक शुक्ल प्रतिपदासम्म तीन दिनको निम्ति मेरोराज्य पृथ्वीमा होस् त्यस राज्यकालमा जुन मानिसहरूले पृथ्वीमा दीपदान गर्दछन्, तिनीहरूको घरमा तिम्री स्त्री "लक्ष्मी" भलाई गर्न स्थिर भई रहून् ।

लक्ष्मीलाई भगवान् विष्णुले आफूबाट पृथक् भई बाहिर जान दिएको थिएन र राजाबलिले त्यससमयमा लक्ष्मी लाई स्वतन्त्ररूपमा सबैको घरमा पुग्न दिई सबै जनतालाई समृद्धिशाली बनाउन दिनु भनी बरदान मागे । दीपावलि लक्ष्मीपूजा संगै यही कारणले चल्यो भन्ने छ ।

राजाबलिको अभियाचना (माग) सुनी भगवान वामनले भन्नु भयो:—

त्रिविक्रम उवाच— (बामनपुराण अध्याय२)

"तथान्य मुत्सव पुण्य वृत्ते शक्रमहोत्सवे
दीपप्रदाननामासौ तत्र भावी महोत्सवः
तत्र त्वा नरशार्दुल हृष्टाः पुष्टाः स्वलंकृताः
पुष्पदीप प्रदानेन अर्चायिष्यन्तियत्नतः ॥
तत्रोत्सवो मुख्यतमो भविष्यति सचापि लोके तव नाम चिहितः
यथैबराज्ये भवतस्तु साम्प्रतं तथैवमात्मान कौमुदीति ॥

**ब्रम्हपुराणमा—**

बीरप्रतिपदं प्राप्य तत्र भावी महोत्सवः ॥
तत्रत्वांनृपशार्दूल हृष्टाः पुष्टाः स्वलंकृत : ॥ ॥
अर्घदीप प्रदानेन अर्चयिष्यन्ति मानवाः ॥

इन्द्रको उत्सव भइ सके पछि तिम्रो नाममा "वालेय" नाम रही तो दिनमा दीपोत्सब हुनेछ त्यससमयमा तिमीलाई मानवहरूले अलङ्कार लगाई खुशि रही फूल दीपहरू चढाई



सम्मान पूर्वक पूजा गर्नेछन । तिम्रै नामले नाम रही त्यो उत्सव हुन्छ र जसरी अहिले तिम्रो राज्यमा हर्ष र उल्लास छ,त्यसरीनै ती समय (बालेयत्रय) तीनदिन बलिराज्यकालमा पृथ्वीमा आमोद प्रमोद पूर्ण भई उत्सब मनाउने छन । यी "बालेयत्रय" नाम रहेका तीन दिनको दीपोत्सवको महीमा अलग् अलग् पाइन्छन ।

१] चतुर्दश्यां च ये दीपा नरकाय ददन्ति च ॥
तेषां पितृगणाः सर्वे नरके न वसन्ति च ॥ ॥
२] अमावास्यां यदा रात्रौ दिबाभागे चतुर्दशी ॥
पूजनीयातदा लक्ष्मी विज्ञेया सुखरात्रिका ॥ ॥

अथवा

दण्डैकरजनीयोगे दर्शः स्यात्तु परेहनि
तदा बिहाय पूर्वेद्युः परेन्हि सुखरात्रिका
कार्तिके मासि शुक्लादौ तिथौ च कुमुमाशकैः ॥
सुखाय सुखरात्रिः स्याइ कायराष्ट्रस्सुखाय वै ॥
३) सुखरात्रे रुषकाले प्रदीपोज्ज्वलितालये ॥
प्रदीपबोधनं कार्यं लक्ष्मीमङ्गलहेतवे ॥ ॥

१) चतुर्दशीमा नरकको नाममा दीपदानगर्नाले आफ्ना पितृगण सबै नरकमा बस्न नपर्ने हुन्छन ।
अमावास्यामा दीपदान गर्नाले धनलक्ष्मीको वृद्धि हुनेछ ।
अमावास्याको रात पछिको प्रतिपदामा उषाकालमा दीपदान गर्नाले शारीरिक स्वास्थ्य र राष्ट्रको सुखसमृद्धिको वृद्धि हुन्छ ।

## तिहार (स्वन्ति) शब्दको विवेचना

लक्ष्मीपूजा देखि भाइटीका सम्मको चाडलाई तिहार भन्दछन् । 'तिहार' शब्द त्यौहारशब्दबाट अपभ्रंशभई बनेको छ र त्यौहारको अर्थ मुख्य चाड भन्ने छ अधिराज्य भरमा यो चाड सबैले मान्दछ र यो चाड़ दशाइँ भन्दा पनि रमाइलो, रसिलो र खर्चिलो हुन्छ ।

यसलाई "स्वन्ति" पनि भन्दछ र "स्वन्ति" स्वन्हुति शब्दको संक्षिप्तीकरण भई बनेको छ । यसको अर्थ लक्ष्मी पूजामा लक्ष्मीलाई चढाएका नैवद्य पक्कान्न चौरासी व्यञ्जन सहितको भोग फलफूल तीनदिनसम्म राखी चौथोदिनमा प्रसाद झिक्नु पर्ने भन्ने र औंसी देखि द्वितीया सम्म तीन दिन सम्म मान्नु पर्ने चाड़ भन्ने पनि इङ्गित गर्दछ । तीन दिन रहने चाड भनी यो सबैपूजा लक्ष्मीपूजा, म्हपूजा र भ्रातृपूजा तीनै दिनमा लगातार गर्नु पर्छ भनी शब्दको अर्थका आधारमा, तिथिहरूको घडीको घट बढबाट र कर्म कालको हिसाबबाट हुने हेरफेर ख्याल नगरी लगातारै तीन दिने चाड भन्ने पनि कोही कोही छन् । यो चाड तिथिको घट बढ अनुसार चारदिनको पनि भएको छ ।

त्यस्तै 'दशाइँ' शब्दको अर्थमा 'दशाइँ' दशदिन गरी मान्नु पर्छ घट बढ गर्नु हुँदैन भन्ने पनि कोही कोही छन् । तिथिको बृद्धि भएमा एघार दिन गरी मान्ने तिथिको क्षय भएमा नउ दिन गरी दशाइँ मान्ने चलन छ । दशाइँ कुनै वर्ष नउ दिने,कुनै वर्ष दशदिने,कुनै वर्ष एघारदिने हुन्छ ।

अतः "स्वन्ति" र "दशाइँ" शब्दको अर्थको आधारमा तीनदिन र दशदिन टीको ती चाँडहरू मान्नु युक्तिसंगत



छैन त्यस्तै मान्ने नै ठीक छ भने हो भने, प्रतिपदा देखि प्रत्येक १५ दिनमा पूर्णे र प्रत्येक ३० दिनमा औंसी मान्ने गरेमा पञ्चाङ्ग गनी तिथिको घडीपला निकली पर्वहरू निर्णय गर्ने सबै झंझट र परिश्रम नपर्ने हुन्छ । कस्तो सजिलो हुन्थ्यो ? ।

## म्हपूजा र बलिपूजा

म्हपूजाको सबन्ध बलिपूजासंग दर्शाउनु के कति युक्तियुक्त हुन्छ भन्ने र तीदुई पूजाको सबन्ध शास्त्रीय आधारमा तथा लौकिक सर्व साधारण प्रचलनको आधारमा अथवा ती दुई मध्ये कुनै एक आधारमा प्राप्य र प्राप्त छ छैन भन्ने बिषयको बिवेचन नगरी केवल सबन्ध छ मात्र भन्नु शंका र प्रश्नको युगका महानुभावहरूको समक्ष झन बढी शंका उत्पादन गर्नु र अन्धपरंपरा कायम राख्न खोजेको जस्तो हुनु स्वतः स्वाभाविक छ अत एव ती दुई पूजाको सबन्ध विषयमा बिचार विमर्श गर्नु समयोपयोगी हुन्छ भन्ने ठान्दछु । ''म्हपूजा' बलिपूजासंग सबन्धराखी गर्नु पर्छ भनी कोही भन्दछ ।

कोही भन्दछ नारीनीराजन, द्यूतक्रीड़ा र ब्राम्हणपूजासंग, म्हपूजाको सम्बन्ध छ"

भविष्य पुराणमा

" ब्राह्मणान् पूजयित्वा तु आत्मानं च विशेषतः ॥
स याति परमस्थानं विष्णोरमित तेजसः ॥ ॥

नेपालवर्षक्रियामा

तस्माद् द्यूतं प्रकर्तव्यं प्रभाते तत्र मानवैः ॥

तत्र द्यूते जयो यस्य तस्य सवत्सरो जयः ॥
श्रोतव्यं गीतवाद्यादि गन्धादि सगुणं तथा ॥
पूजयेत् यमभगिनीं यमंच चित्रगुप्तकम् ॥
मण्डलं क्रियते तत्र स्वपूजां महतीं चरेत् ॥

यी श्लोकहरूबाट म्हपूजाको सम्बन्ध' ब्राम्हणपूजा, द्यूतक्रीडा र नारीनीराजनसंग भएको स्वतः स्पष्ट छ ।

अब म्हपूजाको संवन्ध वलिपूजासंग छ छैन भन्ने विषयमा विशेष विचार गर्दछौं ।

## ती दुई पूजा (म्हपूजा र वलिपूजा) को

| | |
|---|---|
| (क) १. प्रारम्भकाल | (ख) समाजको प्रचलन |
| २. पर्वको प्रकार | १. सर्वसाधारण समाजमा |
| ३. कर्मकाल | २. बलिपूजाको प्राधान्य |
| ४. पूजापद्धति | ३ बलिको मूर्ति अथवा चित्र पूजा नगरेको |
| | ४. बौद्ध संप्रदायमा पनि चलेको |
| | ५. सबभन्दापछि वलिपूजा भन्ने भएको । |

ती दुई पूजाको (क) मा उल्लिखित प्रारंभकालआदि एउटै नभएकोले र (ख) विशेषतः सर्वसाधारण समाजमा बलिपूजासंग म्हपूजा गरि नआएकोले पनि ती दुई पूजाको संवन्ध नभएको स्वतः सिद्धछ ।



(क) १. प्रारम्भकालः—

म्हपूजा वीर प्रतिपदाको कृत्य हुनाले र वीरप्रतिपदाको दिनमा तिम्रो पूजा हुनेछ भनी भगवान वामनले राजाबलिलाई भन्नु भएकोबाट पनि बलिपूजाको प्रारम्भकाल भन्दा अघि म्हपूजाको आरम्भ भई सकेको थियो भन्ने बिषय सिद्धछ।

२. पर्वको प्रकारः—

म्हपूजा दैविक दानवी अथवा पैत्री कर्ममा कुन कर्म भनी सोधेमा हामीले यसपूजालाई दैविककर्म नभनी दानवी अथवा पैत्रीकर्म भन्न सक्दैनौ र दानवी अथवा पैत्री कर्म भन्न पनि मिल्दैन, किनकि म्हपूजा आफ्नो देह अथवा आत्माको पूजा भएकाले यसलाई दैविकपर्वको कर्म भन्दछन ।

## कर्मकाल

बलिको पूजाको कर्मकाल रात भन्ने स्पष्ट छ ।

भविष्यपुराणमाः—

पूजां कृत्वा ततः पश्चाद् रात्रौ दैत्यपते र्बलेः ॥

निर्णयसिन्धुमा

श्रावणी दुर्गनवमी दूर्वा चैव हुताशनी ॥
पूर्वविद्धा प्रकर्तव्या शिवरात्रे र्बलेर्दिनम् ॥ ॥

उक्त श्लोकहरुमा उल्लिखित भए अनुसार बलि दैत्यराज भएकोले पनि रात नै राजाबलिको पूजाकाल छ भन्ने स्पष्टतया सिद्ध छ ।

तर म्हपूजाको कर्मकाल रात्रि भन्ने विषय कहीं पनि उल्लिखित छैन ।

म्हपूजा (आ) दैविकपर्वको कृत्य हुनाले पूर्वान्ह यसको कर्मकाल हुन्छ ।

' पूर्वान्हे दैविकं कर्म अपरान्हे तु पैत्रिकम् ॥ ' -

(इ) मध्यान्हेकालमा हुने भ्रातृपूजा म्हपूजा जस्तै गर्नु भन्ने तन्त्रमा उल्लेख भएकोले म्हपूजा मध्यान्हकालसम्मको कृत्य भन्ने पनि सिद्ध हुन्छ ।

' भ्रातृपूजां द्वितीयायां स्वपूजावत् समाचरेत् '

(उ) साधारणतः पूर्वान्हदेखि मध्यान्हसम्ममा गर्नु पर्ने ब्राह्मणपूजा गरी म्हपूजा गर्नु भन्ने भएकोले " म्हपूजा " पनि पूर्वान्ह देखि मध्यान्हसम्ममा गर्नु पर्ने कृत्य भन्नु पर्दछ ।

ब्राह्मणान् पूजयित्वा तु आत्मानं च विशेषतः ॥

(ऋ) म्हपूजामा दीपदानको विशेषता देखिएकोले र दीपदान कृत्य मध्यान्हकालव्यापी तिथिमा गर्नु भन्ने हुँदा म्हपूजा पनि मध्यान्हकाल व्यापी प्रतिपदामा गर्नु मनासिब छ ।

' कार्तिके मासि भूतादितिथयः कीर्तितास्त्रयः ॥
दीपदानादिकार्येषु ग्राह्या मध्यान्हकालिकाः ॥ '

( ) कहिले काही भालपल्ट प्रतिपदाको घडी थोर भई पूर्वान्ह मध्यान्हसम्ममा प्रतिपदा नभई असामञ्जस्य पर्ने आएमा, औंसी उदय भएको दिन नष्टचन्द्रकुहू (नष्टचन्द्र औंसी) मा नपर्ने गरी तथा त्यस औंसीको गण्डान्तले



न भेटाउने गरी चन्द्रोदयकाल (साँझ) मा भएपनि म्हपूजा गर्नु भन्नेछ ।

"लभ्यते यदि वा प्रातः प्रतिपद्घटिकाद्वयम् ॥
चन्द्रोदये नरःकुर्यात् पूर्वेद्युः विधिपूर्वकम् ॥ "

बलिपूजाको कर्मकाल रात्रि र म्हपूजाको कर्मकाल दिन भन्ने कुरो सर्वथा निर्णय हुन आएको छ ।

दिनमा सूर्योदय र सूर्यास्तमा भेटाएको तिथिको पर्वकाल दिनभर रातभर पनि हुन्छ भन्ने कारणले र कुनै विशेष परिस्थितिमा साँझसम्ममा म्हपूजा गर्नु भन्ने भएको हुनाले पनि रातमा म्हपूजा गर्ने चलन सर्वसाधारणसमाजमा भएको देखिन्छ । उक्त अनुसारमा रातमा म्हपूजा गरेमा पनि शास्त्रीय बाधा नपर्ने देखिन्छ ।

## ४. पूजापद्धतिः -

म्हपूजाको पूजापद्धति तान्त्रिक भएको र बलिपूजापद्धति तान्त्रिक नभएकोले पूजापद्धति बिलकुल फरक छ ।

बलिपूजामा मूर्ति वा चित्र बनाई पूजा गर्नु पर्ने भएकोले र म्हपूजामा तीन देवता, यमपरिवार र परिवारको प्रत्येक व्यक्तिको निम्ति मण्डल बनाई पूजा गरी सगुण प्रसाद लिनु पर्ने भएकोले पनि पूजासामाग्री र पूजाको प्रणालीमा पनि फरक भएको हुँदा पनि पूजा पद्धति एउटै नभएको स्पष्ट छ ।

(ख) म्हपूजामगै बलिपूजा गर्ने सर्वसाधारणसमाजमा प्रचलन नभएकाः—

१. समाजमा सामान्य प्रचलनः—

हाम्रो सर्वसाधारण—समाजमा बलिपूजासंग म्हपूजा गर्ने चलन थिएन र अहिले पनि छैन । बौद्धसंप्रदायको परिवारमा यो प्रचलन छंदै छैन र हुन पनि नसक्ने छ । केही परिवारले मात्र बलिपूजासंग म्हपूजा गर्नु पर्छ भनी चलाइ आएको छ भन्न सुनिन्छ । वस्तुत त्यसरी ती दुई पूजाको सबन्ध राखी एकै पंक्तिमा राखी पूजागर्ने चलन पौराणिक तथा सामाजिक युक्तिसगत छैन ।

२. बलिपूजाको प्राधान्य नमानेकोः—

बलिपूजालाईनै प्राधान्य मानी "म्हपूजा गर्ने गरेको भन्ने कसैसे भनेको भएमा, दैत्यराज राजाबलिकोनिम्ति सबभन्दा माथि बलिको पूजास्थान बनाई त्यसपछि परिवारको प्रत्येक व्यक्तिकोलागि मण्डल बनाई पूजागर्ने चलन हुनु पर्ने हो । तर त्यसरी पूजा गर्ने कसैको पनि चलन बिल कूल छैन । बलिपूजा संग म्हपूजा गरि आएकाले पनि त्यसरी गर्ने प्रचलन गरेको छैन ।

३. राजाबलिलाई पूजा गर्दा मूर्ति अथवा चामलको मूर्ति बनाई अथवा चित्र बनाई पूजा गर्नु भनेकोछ ।

"बलि मालिख्य दैत्येन्द्रं वर्णकैः पञ्चरङ्गकैः ॥
द्विभुजं दैत्यराजानं कारयित्वा नरः स्वयम् ॥ ॥
लोकस्याऽपिगृहस्यान्ते ......................
संस्थाप्य बलिराजानं फलैः पुष्पैश्च पूजयेत् ॥ ॥



उक्त श्लोकहरूमा भनें जस्तै चामलकोमूर्ति बनाई अथवा चित्र लेखी पूजागर्ने चलन हाम्रो समाजमा प्रचलित छदै छैन ।

४) प्रतिपदाको सबै कर्महरू सिध्याई सके पछि मात्र राति बलिपूजा गरी जागरण बस्नु भन्नेछ ।

कुर्वैतत्सर्वमेवेह रात्रौ दैत्यपते र्बलेः ।
पूजां कुर्यान्नृपः साक्षाद् भूमौमण्डलके शुभे
एवं पूजा नृप कृत्वा रात्रौ जागरणं ततः ॥
कारयेत् प्रेक्षणीयादिः नटनर्तननाटकैः ॥ ॥

प्रतिपदाको रातमा जागरण बसी आएकोछ भन्ने विषय अहिले सम्म हजारमा एक व्यक्तिबाट पनि सुनेको छैन ।

अतः यसरी बलिपूजाको पद्धति संग, म्हपूजाको पद्धति नमिलेकोले म्हपूजा संगै बलिपूजा गर्नु शास्त्रउपयुक्त देखिदैन ।

५) बौद्धसंप्रदायमा म्हपूजाको प्रचलन भएको हुँदा वैष्णव संप्रदाय सरहको केवल राजा बलिको नामको तिथि बालेयको उपलक्षमा म्हपूजा गरि आएको भन्नु युक्तिपूर्ण छैन र समाजमा अमिल्दो देखिन आएकोछ ।

अत एव यी कारणले गर्दा म्हपूजा र बलिपूजाको अभिन्न संवन्ध नदेखिएकोले म्हपूजा बलिपूजासंग गर्ने चलन सर्वसाधारण-समाजको प्रचलनमा छैन ।

## म्हपूजा र प्रत्यारम्भपूजा

म्हपूजा लक्ष्मी पूजाको प्रत्यारम्भ पूजा हो, त्यसकारण म्हपूजा लक्ष्मीपूजाको भोलिपल्ट गर्नु पर्छ भनी कोही भन्छ ।

प्रत्यारम्भपूजा कुनपूजालाई भन्दछ भन्ने प्रश्न उठदछ । समाप्तिपूजा अथवा चतुर्थी पूजालाई प्रत्यारम्भपूजा भन्ने छ ।

म्हपूजालाई लक्ष्मीपूजाको प्रत्यारम्भपूजा भन्नु मिल्दैन किनकि म्हपूजा र लक्ष्मीपूजाको कुनै कारणले पनि त्यस्तो अभिन्न सबन्ध छ भन्ने कहीं उल्लेख भएको छैन र म्हपूजा लक्ष्मीपूजाको चतुर्थी पूजा ( समाप्तिपूजा ) को कृत्यको कुनै पनि अङ्ग बन्न सक्तिन्दैन । लक्ष्मीपूजा गरेपछि दिन प्रतिदिन पूजा गरी चौथोदिनमा मात्र चतुर्थीपूजा प्रत्यारम्भपूजा (समाप्तिपूजा गर्ने चलन साधारणत: प्रचलनमा छ ।

दास्रो दिनमानै समाप्ति पूजा गरी फूल प्रसाद झिक्ने चलन कसैको पनि छैन । अत: लक्ष्मीपूजाको भोलो पल्ट म्हपूजा नगरेमा गलग्रह पर्न आउछ भन्ने कुरो युक्तियुक्त छैन ।

आरम्भाजन्तरं यत्र प्रत्यारम्भो न सिध्यति ॥
गर्गादिमुनय: सर्वे तमेवाहु गलग्रहम् ॥ ॥

### लक्ष्मीपूजा देखि प्रतिदिन सामान्यत:—

तीन दिन संम नित्यपूजा गरी चौथो दिनमा चतुर्थी पूजा गरी प्रसाद झिक्ने चलन सबैको छ । तिथिको घडीले



कुनै कुनै वर्षमा लक्ष्मीपूजाको पाँचौ दिनमा पनि उक्त समाप्तिपूजा गर्नु पर्ने भएको थियो र हुनपनि बराबर आउँछ

### स्थानीय महान् देवताको पूजाको महत्व:—

श्रीपशुपतिनाथमा जुन दिन महास्नान हुन्छ, उही दिनमा देउपाटनका मानिसहरूले पूर्णिमा व्रत गरी आएको छ । पूर्णिमा व्रत गर्नमा उदय व्यापी पूर्णिमा मानी गर्ने शास्त्र संगत छैन । त्यस्तै कुनै कुनै महाबिहारमा प्रतिपदा लाग्नासाथ पूजारीले पालो फेर्ने हुँदा उही दिन नयाँ पालो पर्ने आरम्भ पूजा गर्ने चलन छ । म्हपूजा पनि एकै पूजाले हुने गरी औंसीको दिनमा परेवा लाग्नासाथ गर्ने चलन कुनै कुनै विहारमा भएकोले त्यस विहारका बज्राचार्य र शाक्यहरूले आफ्नो बिहारमा उक्त पूजा गरेको दिन घर घरमा म्हपूजा गर्ने चलन गरेको छ । यसरी स्थानीय देवताको सामान्य प्रतिभास आउने पूजाको अनुसरण गरी शास्त्र संगत छ छैन भन्ने बिचार नगरी कुनै कुनै पर्व त्यसरी मानेर आएको पनि पाइन्छ । यसरी गर्दा चाड पर्व मान्ने बिषयमा बिभिन्नता आउने हुन्छ ।

ती आधारहरू मध्ये जुन मुख्य छ त्यस आधारमै बिशेषत: ग्राह्य हुने भएको हुँदा जुन चाड़ अथवा पर्व मान्नु छ उसैको शास्त्रीय आधारमा निर्धारितहुने कर्मकाल मानी चाड़ या पर्व मनाउनु युक्तिसंगत र कल्याण प्रद हुन्छ ।

## म्हपूजा र सुखरात्रि

सुखरात्रि अन्तर्गत गरी म्हपूजाको उल्लेख हुनु पर्छ भन्ने पनि छन ।

सुखरात्रि कुन रातलाई भन्ने प्रश्न उठदछ ?

अमाबास्यां यदा रात्रौ दिवाभागे चतुर्दशी ॥
पूजनीया तदा लक्ष्मी विज्ञेया सुखरात्रिका ॥ ॥

चतुर्दशी र औंसी दुबै तिथिको सयोग भएको रातलाई सुखरात्रि भन्दछ ।

तिथितत्त्वमाः—

दण्डैकरजनीयोगे दर्शःस्यात्तु परेऽहनि ॥
तदा बिहाय पूर्वेद्युः परेन्हि सुखरात्रिका ॥ ॥

रातमा एक घडी संग औंसी भएमा चतुर्दशी औंसी भएको रात छोड़ेर दोस्रो दिनको रातलाईनै सुखरात्रि मान्दछ ।

गदाधर–पद्धतिमाः—

कार्तिकमासि शुक्लादौ तिथौच कुशुमांशकैः ॥
सुखाय सुखरात्रिः स्यात् कायराष्ट्रसुखाय वै ॥ ॥
सुखरात्रे रुपकाले प्रदीपोज्ज्वलितालये ॥
प्रदीपबोधनं कार्यं लक्ष्मीमङ्गलहेतवे ॥ ॥
नारीनिरोजनं प्रातः सायं मङ्गलमालिकाम् ॥



यो उक्त प्रमाण अनुसार अमाबास्या र प्रतिपदाको संयोग हुने रातलाई सुखरात्रि भन्दछ । सुखरात्रिको दुई कृत्यहरू छन् ।

(क) लक्ष्मीपूजा र (ख) शारीरिक र राज्यसम्बन्धी कल्याणगर्ने कृत्य

उक्त प्रमाण बमोजिम उषाकालमा प्रतिपदा तिथि भएको रातलाई सुखरात्रि भन्दछ । उक्त रातको उषाकालमा दीपहरू बालेर उत्सव गर्दछन् । त्यस उत्सवलाई नारीनिराजन भन्दछ । प्रायशः सुखरात्रि लक्ष्मीपूजा दिनमा पर्न आउँछ । सुखरात्रि कृत्य म्हपजा भनेकाले लक्ष्मीपूजा र म्हपूजा एकै दिनमा गर्नु पर्ने हुन्छ ।

# म्हपूजा
## को
## कर्मकाल निर्णय

म्हपूजाको कर्मकाल निर्णयगर्ने आधार निम्नाकित छन् ।

क कर्मको प्रकार
ख) अरु संबन्धित पूजाको कर्मकाल
ग) म्हपूजाको कुनै आंगिकपूजाक कर्मकाल
क) आत्मपूजा कुन प्रकारको कर्म हो ?

यो पूजा दानवी वैष्णवी ( दैविक ) अथवा पैत्री कर्ममा कुन कर्म हो ? यो प्रश्नको उत्तरमा हामीले यसलाई दैविककर्म न भनी अर्को पैत्रीकर्म अथवा दानवीकर्म भन्नमा आधार छैन ।

"पूर्वान्हे दैविकं कर्म अपरान्हे तु पैत्रिकम्"

भन्ने प्रमाण अनुसार सामान्यत: दैविककर्म जति पूर्वान्हमा गर्नु पर्ने हुन्छ ।

कुनै कुनै पूजाको निम्ति रात्रिकाल पनि बताएको छ जस्तै लक्ष्मीपूजाको निम्ति पनि प्रदोषकालको उल्लेख भएको छ । त्यसरी कुनै विशेष पूजाको निम्ति विशेष समय उल्लेख गरेको हुन्छ ।

(ख) संवन्धित भाइटीकाको कर्मकालमा म्हपूजा:—

भ्रातृपूजा पनि म्हपूजा जस्तै गर्नु भन्ने भएकोले भ्रातृपूजाको कर्मकालमा म्हपूजा गर्नु युक्तियुक्त हुन्छ ।

ज्यौतिषतन्त्रमा:—

" भ्रातृपूजां द्वितीयायां स्वपूजावत् समाचरेत् "

भ्रातृपूजाको कर्मकाल मध्यान्हकाल लिने चलन भइ सकेको हुँदा म्हपूजा पनि मध्यान्हसंममा गर्नु पर्ने हुन आएको छ ।

(ग) १. म्हपूजाको कुनै आङ्गिक कर्मको कर्मकाल:—

म्हपजामा आफ्नो मस्तक देखि कण्ठसंमको लमाई भएको बत्ति (खेलुइता) बाल्नु पनि एक मुख्य आङ्गिक कर्म भएको छ । दीपको उत्सवको समय मध्यान्हकाल भनी उल्लिखित भएको छ ।



कार्तिके मासि भूतादितिथय: कीर्तिता स्त्रय: ।।
दीपदानादिकार्येषु ग्राह्या मध्यान्हकालिका: ।। ।।

अत: एव म्हपूजा मध्यान्हकालमा गर्नु पनि यस प्रमाण अनुसार युक्ति संगत हुन्छ ।

२. यम र यमदूतको पूजा पनि म्हपूजाको आंगिक पूजा:—

" पूजयेत् यमदूतांश्च यमं च चित्रगुप्तकम् ।।
मण्डलं क्रियते तत्र स्वपूजां महतीं चरेत् ।। ।।

म्हपूजासंगै यम, चित्रगुप्त र यमदूतलाई पनि पूजा गर्दछन् ।

स्कान्दे–" ऊर्जे शुक्ल द्वितीयायाम्
अपरान्हेऽर्चयेत् यमम् "

यमद्वितीया– सा च परान्हव्यापिनी ग्राह्येत्युक्तं निर्णयामृतादौ । मध्यान्हव्यापिनी पूर्वविद्धा चेति हेमाद्रि: इयं या कर्मकालव्यापिनी सैव ग्राह्या ।

यमको पूजा मध्यान्ह अथवा अपरान्हमा गर्नु भन्ने छ र भ्रातृपूजाको आंगिक रूपमा हुने यमपूजाको कर्मकाल मध्यान्हकाल भएकोले म्हपूजामा पनि यसकोपूजा मध्यान्ह कालमा गर्नु पर्ने देखिन्छ ।

अत: म्हपूजा पनि मध्यान्हकालमा गर्नु पर्ने देखिन आएको छ ।

(क), (ख) र (ग) मा उल्लेख गरेका कारण रू अनुसार पूर्वान्ह देखि मध्यान्हसम्मको समयमा र सूर्योदयमा पनि हुने प्रतिपदामा म्हपूजा गर्नु पर्ने हुन्छ (घ) उक्त अनुसार पूर्वान्ह मध्यान्हमा हुने औदयिकप्रतिपदा प्राप्त न भएमा चन्द्रोदय समय ( साँझ ) मा हुने प्रतिपदा तिथिमा म्हपूजा गर्नु भन्ने छ ।

अतः म्हपूजाको दिनः—

१) पूर्वान्ह मध्यान्ह व्यापिनी औदयिक प्रतिपदा

अथवा

२) चन्द्रोदय समय (सूर्योस्त) व्यापिनी पूर्वविद्ध प्रतिपदा

यसरी म्हपूजाको कर्मकाल वैकल्पिक किन रह्यो भनी प्रश्न गर्न सक्दछ ।

## उत्तरः-

१) उदय व्यापिनी प्रतिपदा नै म्हपूजा गर्ने भन्ने भएमा कुनै वर्ष म्हपूजा र भ्रातृपूजा एकै दिनमा गर्नु पर्ने हुन्छ ।

जस्तैः— वि. सं. १६६२ मा

कार्तिककृष्ण चतुर्दशी २१।१२ लक्ष्मीपूजा

कार्तिककृष्ण अमावास्या १५।५८

कार्तिकशुक्ल प्रतिपदा ६।४४ भ्रातृपूजा

उदयमा हुने प्रतिप्रदा मात्र लिनेभएमा म्हपूजा पनि उही भ्रातृपूजाको दिनमा गर्नु पर्ने हुन्छ । )



२) चन्द्रोदयसमय (सायान्ह) व्यापिनी प्रतिपदामा नै म्हपूजा गर्ने भन्ने भएमा कुनै वषमा म्हपूजा र लक्ष्मी पूजा एकै दिनमा गर्नु पर्ने हुन्छ ।

जस्तै —

कार्तिककृष्ण अमावास्या २७।३० लक्ष्मीपूजा,

कार्तिकशुक्ल प्रतिपदा २३।३६

कार्तिकशुक्ल द्वितीया १६।४५ भ्रातृपूजा

केही पुराना लेखोट वात्रोहरूमा अस्ते म्हपूजा भनी लेखिएकोले सायंकालव्यापिनी प्रतिपदामा म्हपूजा गर्ने भन्ने देखन्छ । यसरी सायान्ह व्यापिनी प्रतिपदानै म्हपूजाको दिन सँधै मान्ने चलन भएमा म्हपूजा र लक्ष्मीपूजा एकै दिनमा पूर्वोक्तवत् गर्न पर्ने हुन्छ । सर्वदा अस्तकालीन प्रतिपदा लिने भन्ने सिद्धान्त अपनाउँदा सबै वर्षमा नलाग्ने हुन्छ ।

व्यवहारमा लक्ष्मीपूजा र म्हपूजा, त्यस्तै म्हपूजा र भ्रातृपूजा पनि एकै दिनमा गर्ने चलन छैन ।

दोस्रो बैकल्पिक कर्मकाल अनुसार त्यसरी कुनै वर्ष चन्द्रोदय समयमा हुने पूर्वविद्ध प्रतिपदामा म्हपूजा गर्ने भन्ने भएको हुँदा र धेरै सामान जुटाउनु पर्दा धेरै समय लाउदा बेलुकाको समयमा म्हपूजा गर्ने चलन चलि आएको हुनु पर्छ ।

चन्द्रोदय समयमा तथा चन्द्रोदय भए पछि म्हपूजा गर्नु भन्ने छ । चन्द्रोदय धर्म सिन्धुमा दुई प्रकारको छ भनी उल्लेख भएको छ ।

"इष्टिनिर्णय प्रकरणे त्रिमुहूर्त द्वितीयाप्रवेश मात्रेण चन्द्रदर्शनमुक्तम् तत्सूक्ष्मदर्शनाभि प्रायम्
अत्रस्थूलदर्शनमेव

क) सूक्ष्मदर्शनम् (सूक्ष्मचन्द्रोदय)

ख) स्थूलदर्शनम् (स्थूलचन्द्रोदय)

स्थूलचन्द्रोदयः—

हाम्रो चमचक्षुले देखिने औंसी पछिको; चन्द्रमाको पहिलो उदयलाई स्थूल चन्द्रोदय भन्दछ ।

सूक्ष्मचन्द्रोदयः—

उक्त स्थूलचन्द्रोदय भन्दा केही घडी अगाडि हुने हुन्छ ।

भास्कराचार्यले कालाँशा चन्द्रमाको १२ हुन्छ भन्नु भएको छ ।

दस्रेन्दवः शैलभुवश्च शक्रा रुद्राः खचन्द्रा स्तिथयः क्रमेण ॥

चन्द्रादितः काललवा निरुक्ता ज्ञशुक्रयोर्वक्रगतौ द्विहीनाः

१२ अंशाको फरक हिसाबले एक एक तिथि बढदै जान्छ भनि सूर्यसिद्धान्तमा भनको छ ।

"अर्काद्विनिः सृतः प्राचीं यद्यात्य हरहः शशी ॥
तच्चान्द्रमान मंशैस्तु ज्ञ या द्वादशभि स्तिथिः ॥ ॥

कालाँशाको हिसाबले मात्रै होइन क्षेत्रांशाको हिसाबले ग्रहहरूको उदय अस्त हुन्छ ।



सूर्यसिध्दान्तमाः—

अष्टादशशताभ्यस्ता दृश्यांशाः स्वोदयांशुभिः ॥
विभज्य लब्धं क्षेत्रांशा स्तै दृश्यादृश्यता मता ॥

द्विविधदृकर्म संस्कार संस्कृता चन्द्रादेराश्युदयवैषम्येण देशभेदेन च नियतत्वाद् कदाचित अमावाश्याया मपि साद्धैं दशभिरंशै रन्तरित श्चन्द्रो दर्शनगोचरो भवति। कदाचित् षोडशांशशान्तरितो द्वितीयाया मपि चन्द्रो दृक् गोचरो भवति । एवमेव कदाचि चतुर्दशीशेषे न दृश्यते । कदाचिद् अल्पावशिष्टायां प्रतिपदि अपि दृश्यते ।

प्रतिपदाको घडी न सिध्दिदै कुनै महीनामा उक्त चन्द्रोदय हने हुन्छ । कालांशा १०/३० सम्ममा पनि चन्द्रोदय हुनुसक्ने हुँदा कुनै महीनामा प्रतिपदाको करीव १० घडी बाँकीमा पनि उक्त चन्द्रोदय हुनुसक्छ । प्रतिपदा करीब १० घडीसम्म भएको दिनको अघिल्लो दिन अहोरात्र भित्र उक्त चन्द्रोदय संभव भएकोले औंसी उदय भएको दिनको अहोरात्र भित्र उक्त चन्द्रोदय हुने छ भने, उक्त दिनमा झपूजा गर्नु पनि युक्तिसंगत हुन्छ ।

जस्तै वि. सं. १९६१ मा
कार्तिककृष्ण चतुर्दशी १०।११ लक्ष्मीपजा
अमावास्या ६।३६ झपूजा
प्रतिपदा ७।५५ भ्रातृपूजा

प्रतिपदामा उत्तरशृङ्ग गरी उदय भएको चन्द्रमाको प्रशंसा विशेषतः गरेको विषय धेरै ग्रन्थहरूमा प्राप्त छ ।

महाकवि भारविले पनि किरातार्जुनीयमहाकाव्यमा उक्त चन्द्रोदयको वर्णन गर्नु भएको छ ।

प्रणमन्त्यनपाय मुत्थित प्रतिपच्चन्द्रमिव प्रजानृपम्'

गर्गसंहितामा

यदा चन्द्रः प्रतिपदि नौसंस्थाय प्रदृश्यते ॥
क्षेमं सुभिक्ष मारोग्यम् सर्वभूतेषु निर्दिशेत् ॥ ॥

अतः एव चन्द्रोदय हुने प्रतिपदामा शुभकार्य गर्नु कल्याणप्रद छ भन्ने विषय स्वतः सिद्ध छ ।

म्हपूजाको संवन्ध चन्द्रोदयसंग भएको हुँदा स्थूल अथवा सूक्ष्म चन्द्रोदयसंग संवन्ध भएको दिनमा आत्मपूजा गर्नु युक्तियुक्त छ । प्राप्तभएसंम स्थूल-चन्द्रोदय हुने दिनमा, भ्रातृपूजाको दिनसंग अनुकूल नपर्ने भएमा सूक्ष्म चन्द्रोदय अथवा गणितागत चन्द्रोदयको समय हुने दिनमा भएपनि म्हपूजा गर्नु युक्तियुक्त ठहरिएको छ ।

(क) स्थूल चन्द्रोदयको दिनमा नै म्हपूजा र भ्रातृपूजा कुनै वर्षमा एक दिनमा गर्नु पर्ने हुन्छ । यसरी म्हपूजा र भ्रातृपूजा एकै दिनमा गर्ने चलन छैन ।

कुनै वर्षमा स्थूल चन्द्रोदय भएको दिन उक्त बाधापर्ने आउने हुनाले सूक्ष्मचन्द्रोदय हुने दिनमा पनि म्हपूजा गर्ने चलन रहेको छ ।

सूक्ष्मचन्द्रोदय स्थूलचन्द्रोदय भन्दा अघिबाट हुने



स्वतः सिद्ध छ । नष्टचन्द्र हुने कुहू तिथि (औंसी) को र त्यस नष्टचन्द्रको संपर्क पर्ने गरी म्हपूजाको कृत्य गर्नु हुँदैन । उक्तनष्ट चन्द्र हुने औंसीको समयमा र अमाको अन्तकाल पछि पनि प्रायशः ४ घडीसम्म सूर्यचन्द्रको संगम छुटदैन । चन्द्रोदयमा गर्नु पर्ने कर्म नष्टचन्द्र भएको औंसी (कुहू) मा नगर्नु र ( म्हपूजा ) को पूर्वकर्महरू देवता पशुपक्षि लाई मण्डल बनाई पूजागर्नु पनि औंसी भित्र नगर्नु उपयुक्त छ । त्यसकारण कुनै कुनै समाजमा वेलुकापख मात्र देव देवता कहाँ पनि म्हपूजासम्बन्धी पूजा गर्ने गरेको अझसम्म प्राप्त छ ।

चन्द्रोदयसमयमा हुने प्रतिपदाको दिनमा म्हपूजा गर्नु भ्रातृपूजासंग एकै दिनमा परेर उक्तपूजा गर्न नहुने भएमा औदयिक प्रतिपदा मध्यान्हसंम छ भने, वही दिनको रातमा पनि म्हपूजा गर्नु हुन्छ भन्ने प्रमाण छ ।

या तिथिः समनुप्राप्य उदयं याति भास्करः ॥
सा तिथिः सकला ज्ञेया स्नानदानादिकर्मसु ॥ ॥

अथवा

या तिथिः समनुंप्राप्य अस्तं यातिच भास्करः ॥
सा तिथिः सकला ज्ञेया स्नानदानादिकर्मसु । ॥

यी प्रमाणहरूको आधारमा सूर्योदय अथवा सूर्यास्त प्राप्त भएको तिथि दिनभर, रातभर उक्त तिथिको पर्व समन्न छ भनी दान पूजा स्नान आदि गर्ने चलन छ ।

अत: एव प्रतिपद् तिथिको घडी थोरै भए पनि पूर्व उक्त प्रमाण अनुसार म्हपूजा प्रतिपदा नाघी द्वितीया हुने रातमा गरेमा पनि शास्त्रीयबाधा छैन ।

यसरी म्हपूजाको दुई वैकल्पिक कर्मकाल रहेकोछ । उक्त कर्मकाललाई पछि उल्लेख हुने चार वटा पृथक् नियम हरू बनाई म्हपूजा गर्ने गरेमा अर्थात् भ्रातृपूजाको अघिल्लो दिनमा म्हपूजा गर्ने गरेमा कहिले पनि गडबड नआउने हुन्छ र कुनै समस्या यस विषयमा आउने छैन ।

उक्त चार वटा पृथक नियमहरू उल्लेख गर्नु अघावै पहिले प्रतिपदाको विभिन्न कृत्यहरू कर्मकालको क्रम अनुसार बिभाजित गरिएकाछन् ।

" अस्यां प्रतिपदि बलिपूजा, दीपोत्सवो गोक्रीडनं गोवर्ध्दनपूजा, मार्गपालीबन्धनं, यष्टिकाकर्षणं, नव वस्त्रादिधारणद्युत्सवो द्यूतं, नारीकर्तृकनीराजनं मङ्गलमालिकाश्चेत्येव मादीनि कृत्यानि "

क) प्रत्यूषे— अभ्यङ्गस्नानम्

ख) उषाकाले— नारीकर्तृकनीराजनम्

ग) प्रभाते—गोबर्द्धनपूजा, द्यूतं, नववस्त्रादिधारणं, प्रदानंच

घ) प्रात एव— गोपूजा



ङ पूर्वान्हे—अथवा (कस्मिश्चित् वर्षे सायान्हे) म्हपूजा

च) अपरान्हे— मार्गपाली वन्धनम् यष्टिकाकर्षणम्

छ) सायान्हे— मङ्गलमालिका

ज) रात्रौ— बलिपूजा

झ) रात्रौ— जागरणम्

म्हपूजाको अतिरिक्त प्रतिपदाका उक्त कर्महरू चन्द्रोदय भएपछि नगर्नू भन्ने छ ।

(क) तत्र यदि उदयब्याप्य दशमुहूर्ता (करीब २० घडी) प्रतिपद्, तदा चन्द्रदर्शनाभावाच्चन्द्रदर्शनप्रयुक्त द्वितीयाबेधनिषेधप्रवृत्ते: सर्वकार्याणि परप्रतिपदि एव भवन्ति ।

यदि प्रतिपदाको करीब २० घडी छ भने, उक्त प्रतिपदाको दिनमा प्रतिपदको सबैकर्म गर्नु भनेको छ ।

वि०द्र०— इष्टिनिर्णयप्रकरणे त्रिमुहूर्तद्वितीया प्रवेशमात्रेण चन्द्रदर्शन मुक्तम्, तत्सूक्ष्मदर्शना भिप्रायम् ।

अत्र स्थूलदर्शनमेव निषेधप्रयोजकं तत्र षण्मुहूर्त द्वितीयाप्रवेश एवेति न विरोध इति भाति ।

सूर्यास्त भन्दा तीन मुहूर्त (करीब ६ घडी) अघि द्वितीया लागेमा चन्द्रदर्शन हुन्छ । त्यो स्थूलदर्शनको अभिप्राय मात्र हो ।

स्थूल दर्शनमात्र निषेध जनक छ र त्यसदिन सूर्यास्त भन्दा ६ मुहूर्त ( करीब १२ घडी ) अघि द्वितीया प्रवेश भएमा त्यसमा विरोध पर्दैन जस्तो लाग्छ ।

(ख) १. यदि नवमुहूर्ता नास्ति, तदा बलिपूजा, गोक्रीडा, गोवर्द्धनपूजा, मार्गपालीबन्धनं, यष्टिकाकर्षणानि, पूर्वविद्धप्रतिपदि कार्याणि ।

२. अभ्यङ्गनववस्त्रादिधारणद्यूतनारीकर्तृकनीराजनमङ्गलमालिकादीनि, औदयिकमुहूर्तव्यापिन्यामपि कार्याणि ।

३. बलिपूजादेः पूर्वविद्धाया मनुष्ठानाऽसंभवे परविद्धायां कार्यम् ।

१) यदि प्रतिपदाको घडी नवमुहूर्त ( करीब १८ घडी ) छैन भने, बलिपूजा, गोक्रीडा, मार्गपालीबन्धनं, यष्टिकाकर्षण हरू पूर्वविद्धप्रतिपदामा गर्नू ।

२) उदयव्यापिनी एक मुहूर्त ( करीब २ घडी ) सम्म रहने प्रतिपदामा पनि अरुकाम गर्नू ।

जस्तै अभ्यङ्ग, नववस्त्रादिधारण, द्यूतक्रीडा, नारी कर्तृकनीराजनं, मङ्गलमालिका आदि ।



३) बलिपूजा आदि पूर्वविध्दप्रतिपदामा गर्नु अनुकूल न भएमा परविद्ध प्रतिपदामा गर्नू, कर्महीन नगर्नू ।

(ग)

त्रियामगा दर्शतिथिर्भवेच्चेत् सार्द्धत्रियामा प्रतिपद् विवृद्धौ ॥
दीपोत्सवे ते मुनिभिः प्रदिष्टे अतोन्यथा पूर्वयुते विधेये ॥ ॥

सार्द्धत्रियामा इत्यनेन चन्द्रदर्शनाभाव उक्तः । अत्र दीपोत्सवपदेन गोपूजनादिकमेव गृह्यते, कालाऽनुग्रहाद् न तु बलिपूजादिकालावाद्यपसर्गाद्, चन्द्रदर्शनाभावप्रयोजकसार्धत्रियामोक्तिसामर्थ्याच्च, पूजायां दीपदानसत्वेन दीपोत्सवपदस्य उभयत्र सम्बन्धाच्च। ग क्रीडने नीराजने, दीपसंबन्धात् तत्रापि दीपोत्सवपदस्य सम्भवात् ।

१) अमावास्या तीन याम (करीब १८ घडी ) भएमा र प्रतिपदा सार्द्धत्रियाम ( करीब २१ घडी ) जति भएमा प्रतिपदाको घडी वध्दमान हुने हुँदा ( अर्थात प्रतिपदा भन्दा द्वितीयाको घडी बढीभएमा हुने) पर विद्ध प्रतिपदामा दीपोत्सव गर्नु पर्दछ ।

२) यसको विपरीत भएमा औंसीको घडी भन्दा प्रतिपदाको घडी घटेमा (अर्थात् प्रतिपदा न्हासमान छ भने पूर्वविद्ध प्रतिपदामा औंसी उदय भएको दिनमा दीपोत्सव गर्नु पर्दछ ।

वि. द्र. प्रतिपदा सार्द्ध त्रियाम भन्नाले चन्द्रदर्शनको अभाव देखाएको छ । दीपोत्सव पदले गोपूजनादि आउँछ । स्त्रीक्रीडन, नीराजनमा दीपसंग संबन्ध भएकाले त्यहाँ पनि दीपोत्सव पदको संभव छ ।

त्यस्तै आत्मापूजामा पनि—

घ) वर्षक्रियामा:—

"लभ्यते यदि वा प्रातः प्रतिपद्घटिकाद्वयम् ॥
चन्द्रोदये नरः कुर्यात् पूर्वेद्युः विधिपूर्वकम् ॥ ॥
नारीनिराजनं प्रातः सायं मङ्गलमालिकम् ॥

बिहान प्रतिपदाको घडी दुईघडी मात्र भएमा पनि बिहान निराजनगर्ने, साँझमा मङ्गलमालिकागर्ने, म्हपूजा बिधिपूवक अघिल्लोदिन पूर्वविद्धप्रतिपदामा चन्द्रोदय (साँझ) मा गर्नु पर्दछ ।

पूर्व उक्त चार प्रकारको निर्णय अनुसार कर्मकाल निर्धारण गरी "म्हपूजा" निम्न अनुसार गर्न युक्तियुक्त छ ।

क) प्रतिपदा २० घडी भन्दा बढी भएमा, उदयव्यापिनी प्रतिपदा भएको दिन म्हपूजा गर्ने

बि.सं, १९५६ सालमा. दि. मा. २७।०
अमाबास्या ३२।३२ लक्ष्मीपूजा
प्रतिपदा २६।५७ म्हपूजा
द्वितीया २१।५५ भ्रातृपूजा



ख) प्रतिपदा करीब १८ घड़ी भन्दा कम भएमा

अमाबास्या भन्दा प्रतिपदा ह्रासमान छ भने ( अर्थात अमाबास्याको घडी भन्दा प्रतिपदाको घडी घटदै गएको छ भने ) पूर्वबिद्ध प्रतिपदामा म्हपूजा गर्ने जस्तै बि.सं १९६२ सालमा

कार्तिककृष्ण चतुर्दशी २१।१२ लक्ष्मीपूजा
अमाबास्या १५।५० म्हपूजा
प्रतिपदा ६।४४ भ्रातृपूजा

ग) अमाबास्या भन्दा प्रतिपदा वर्द्धमान भएमा ( अर्थात् अमाबास्याको घड़ी भन्दा प्रतिपदाको घडी बढदै गएको छ भने ) परबिद्ध प्रतिपदामा म्हपूजा गर्ने ।

जस्तै:—बि सं. १९६५ सालमा।
कार्तिक कृष्ण चतुर्दशी ११।५१ लक्ष्मीपूजा
अमाबास्या १४।३४ गोवलिपूजा
कार्तिक शुक्ल प्रतिपदा १६।२ म्हपूजा
द्वितीया १६।१२ भ्रातृपूजा

घ) प्रतिपदा २ घडी करीब भएको खण्डमा अघिल्लो दिन पूर्वबिद्धप्रतिपदामा औंसी उदय भएको दिनमा म्हपूजा गर्ने जस्तै बि.सं. २००० सालमा।

कार्तिककृष्ण चतुर्दशी १।२२ लक्ष्मीपूजा
अमाबास्या २।१७ म्हपूजा
कार्तिकशुक्ल प्रतिपदा १।५५ भ्रातृपूजा

बि.द्र. पूर्वोक्त चारनियम अनुसार म्हपूजाको कर्मकाल निर्धारण गरेमा सर्वत्र लागु हुने हुन्छ र संदिग्धता आउने छैन।

(क) सूर्योदय अथवा सूर्यास्त (चन्द्रोदय) समय पाएको तिथिको पर्वकाल दिनभर रातभर छ भन्ने शास्त्रीयचलन अनुसार (ख) भ्रातपूजा म्हपूजा सरह गर्नु भन्ने प्रमाण अनुसार (ग) व्यवहारमा पनि तो दुईपूजाको पद्धति एउटै भएको (घ) यमपञ्चकमा यी दुई दिनमा यमको आरम्भपूजा र प्रत्यारम्भपूजा म्हपूजा र भ्रातृपूजासंगै भएकोले म्हपूजामा मण्डलहरू अन्तमा बढारी तलतिर लैजाने र भ्रातृपूजामा तल-बाट बढारी माथिलं जाने चलन गरेकोबाट पनि यी दुईपूजा म्हपूजा र भ्रातृपूजाको निरन्तर संबन्ध देखिएको छ। भ्रातृ पूजासंग गलग्रह नपर्ने गरी दिन नछुट्याई म्हपूजा भ्रातृ पूजाको अघिल्लो दिनभर गर्ने गरेमा उक्त चार नियमसंग मिल्ने र उक्त चलन राख्नु प्रमाणसिद्ध र कल्याणप्रद हुन्छ। भन्ने देखिएको छ।

## शुद्धिपत्र

| पृष्ठ | पंक्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|
| २ | १४ | पूजयच | पूजयेच्च |
| ,, | १७ | व्राम्हणः | ब्रम्हणः |
| ५ | ११ | दैत्यपले | दैत्यपते |
| ,, | १५ | चिनगुप्त | चित्रगुप्त |
| ६ | २ | तिष्ठत्यस्याँ | तिष्ठत्यस्यां |
| ,, | ४ | प्रहृष्पति | प्रहृष्यति |
| ,, | ५ | भुक्ता | भुक्तौ |
| ,, | ५ | भालिक | भोक्ता |
| ,, | ६ | ष्टैहृष्टैस्तैप्र | तुष्टैःप्रहृष्टैः |
| ८ | १२ | बुधैः | बुधः |
| ,, | १४ | मानवैः | मानवः |
| १० | ७ | थमुजाया | यमुनायां |
| ११ | ११ | चित्रगप्त | चित्रगुप्त |
| ११ | १२ | अर्घ्यचात्र | अर्घ्यश्चात्र |
| ,, | १३ | भगवन्न | भगवन् |
| १३ | ७ | घस्त | घस्र |
| ,, | १० | तेषो | तेषां |
| १४ | १६ | यथॅव | यथैव |
| ,, | १८ | अर्घ | अर्घ्य |
| १५ | ८ | गणः | गणाः |
| २४ | १७ | जन्तर | नन्तर |
| २७ | १८ | पूजाक | पूजाको |
| २९ | १२ | च परा | चा परा |
| ३३ | ४ | टकर्म | टकर्कर्म |
| ,, | ७ | षोढशांश्शा | षोडशांशा |
| ४३ | ७ | अल्पशः | अल्पतर |

कहीं कहीं पूजाको पजा भएको र रेफ, विसर्ग, अनुस्वार ईकारादि उडेको।

## म्हपूजाको कर्मकाल निर्णयको तेरीज.

लक्ष्मीपूजाको कर्मकाल प्रदोष र अर्द्धरात्रिलिए जस्तै म्हपूजाको कर्मकाल पूर्वान्ह र सायान्ह हुन । म्हपूजा व्रत नभई चाड्को हिसाबले मानेकोछ र पूजामा पूर्वान्ह भन्नाले पूर्वान्ह देखि मध्यान्ह सम्मको समयावधि ग्राह्य छ यसको कालनिणयमा साधारणतः तीन प्रकारको बिभाजन गरिएको छ ।

(क) पूर्वान्ह र सायान्हमा हुने प्रतिपदा

(ख) पूर्वान्हमा हुने प्रतिपदा

(ग) सायान्हमा हुने प्रतिपदा

यी तीनमध्ये उत्तरोत्तर अल्पशः ग्राह्यछ ।

बि.द्र. यस बिषयमा (कर्मकाल निर्णय बिषयमा ) कुनै अरु समुचित व्यवहारमा चलेको शास्त्रीय प्रमाण आधारित सुझाव प्राप्त हुन सक्छ भने, उक्त उपलब्ध गराई दिनु भएमा पुरस्कारदिने व्यवस्था गरिएको छ र साथै विशेष कृतज्ञ हुनेछ ।